॥ श्रीः ॥

नवीन

# नेपाली



# हितोपदेश



## मित्रलाभ भाग







विक्रम सम्वत् २०१५



- लेखक -

मोदनाथ "प्रश्रित"

मूल्य
... पैसा

प्रथम संस्करण
१०००

श्री प्रिय सज्जन वर्ग ! तथा बाल ० बालिका गण !

आजको नव युगमा नीति शास्त्रनै सर्वोत्तम मानियेको छ, प्राचीन शास्त्र हरू ज्यादा गंभीर अर्थका छन्, सहसा ज्ञान हुन सक्तैन, त्यसका लागी तपाइ हरूको सेवांमा सरल नवीन नेपालि हितोपदेश अग्रभाग मा आयेकोछ, यस्मा सामान्य अक्षर सँम चिनेका लाइपनि प्रौढ नीति ज्ञान हुन सक्तछ र देशको उन्नति हुन सक्तछ, यो पुस्तिका एकवार मात्र पढ्नु भो भने सहसा ज्ञान हुनेछ, जुन पुस्तिकाका लेखक "प्रश्रित" जी वाल्यावस्थामानै एक चमत्कृत व्यक्ति वन्नु भयेको छ वहाँको वय केवल १४।१५ वर्षको मात्रछ, वहाले १०।८ वर्षमानै अगण्य भावपूर्ण कविता गरि सक्नु भयेको थियो फेरी वहाँले देशसेवा को सङ्कल्प ले "प्रश्रित" ( सेवक ) शब्द को प्रयोग गर्नु भयेकोछ, छाया नुवाद हुनाले र नेपाली व्याकरण को प्रचार भैन सके को हुनाले व्याकरण को के ही कमी होला, त्यसले केहा विफायदा छैन. म विश्वास गर्दछु कि वहाले कविता वाट नै देशसेवा गर्नु हुनेछ, जस्लाइ शैशव अवस्थामाने गुल्मी खिदीम हा० सं० वि० का प्रधानाध्यापक वाट पुरस्कार प्राप्त भयेथ्यो, र नवयुगमा वहांको अद्भुत चित्रकारी पनि वहुत लाभ दायक छ



लेखक
टेकराज शर्मा अधिकारी

पुष्पाञ्जलि



हे हे कृपालु ! अति धन्य हजूर धन्य. हेकाश्यपोद्भव सखे ! प्रभु धन्य धन्य
जस्ले गरापनि लहड् विच उन्जयेकी, लाइप्रकास् गरनुभो प्रभु हे विवेकी !
आजन्म लाइ अव भक्ति रहोस्हजुर्मा मेरो हजूरसरिका अरुको ? जगत्मा
जस्को कृपा भइत पुस्तक भन्न आज, पाइ रहेछु जयहे प्रभु ! "टेकराज"

भवदाय मोदनाथ
"प्रश्रित"

भक्ति पूर्वक

नेपाल मण्डलान्तर्गत गुल्मी खिदिम ग्राम निवासी श्रीमाननीय पण्डित प्रवर, धर्म धुरन्धर, कवि शिरोमणी सर्व शास्त्रज्ञ हरिहर संस्कृत विद्यालय प्रधानाध्यापक श्री श्री श्री १०८ गुरुज्यू प० दधिराम शर्मा का चरण कमल मा समर्पण, जस्लाइ दौहित्र वाणी अत्यन्त मीठो लाग्दथ्यो

## पितृ वियोगमा

प्राणै तुल्य गरिजस्ले मेरो उद्धार गर्नुभो
मीठा भोजनले नित्य पालना पनि गर्नुभो
आफैंनै पाठ दीयेर पढ़ाउनु पनीभयो
आजनै किन हेतात । चट्ट छाडेर पाल्नुभो
घाम, शीत हरू देखि जलवायू, अग्नि देखिनैं
बचायेर पित । झट्ट पाल्नुभो किन स्वर्गमै ।
जस्ले मिष्टान्नले नित्य मेरो पालन गर्नुभो
उसैको बदला भांहाँ मैले चाग्ल् दिनू पर्‍यो ।
हे मित्र हो ! जीवनमा यस्को ख्याल हुदैन है
मरेपछि पितामाता हुनेछ पछुतो सधैं
यहि सम्झेर साथी हो । वन भक्त पिताजीको
पितृभक्त वनी झट्ट मालीक् ह्वो दुइ लोकको
टुहुरो पुत्र मोदनाथ "प्रश्रित"

# हितोपदेशः

(अथ मङ्गला चरणम्)

श्रीगणेशाय नमः श्रीविष्णवेनमः आत्रेयादि ऋषिभ्योन्तम्
सर्वेभ्यो देव ऋषिभ्यो नमः

जसका शिरमा चन्द्र जान्हवी फेन तुल्यछन्।
स्वैशङ्कर्का कृपालेनै सज्जनका कार्य बन्दछन्॥ १॥
जोयो हितोपदेश् सुन्छ सँस्कार्मा अस्ति शिल्पर।
विचित्र वचनै माभै नीति विद्यात जान्दछ॥ २॥
बुद्धिमान् जनले विद्या धनमा अमरै बनोस्।
धर्ममा कालले टुप्पो समातेका सरी हवोस्॥ ३॥
सम्पूर्ण द्रव्यमा विद्या उत्तं द्रव्यत भन्दछन्।
न चोर्चोर्छ ननारहुन्छ नयस्का कोहि मूल्यछन्॥ ४॥
विद्याले तुच्छ मानिस्नै राजामा प्राप्त हूँदछन्।
जस्तै समुद्रमा शाना खोला हेरुत पुग्दछन्॥ ५॥
विद्याले नम्रता प्राप्त सत्पात्र नम्रले सखी?
सत्पात्रलेत धन्प्राप्त धनले धर्म अनि सुखी॥ ६॥
विद्या दुई वि सि का छन् शस्त्र शास्त्र इनिमहाँ।
शस्त्रवृद्ध महाँ हास्य शास्त्रको मान् सदा यहाँ॥ ७॥
सेतो वस्त्र महाँ रातो रङ्ग जस्तोरि वस्दछ।
त्यस्तै वालकका लागी नीति शास्त्र कहींदछ॥ ८॥
मित्रलाभ सुहृद्भेद सन्धि विग्रह ईहरू।
पञ्चतन्त्र अरू ग्रन्थ देखि ल्यायेर लेख्द छु॥ ९॥

भागीरथी नदिको तीरमा पटना नाम को सहरछ त्याहां सर्वमान्य सुदर्शन नामका राजा थिये तिन्ले कोई समयमा कसैले भनेका दुई श्लोक सुने—

घेरै संशय नास् गर्ने वस्तु अदृश्य दर्शक
विद्याले हीन अन्धाहो विद्यानै नेत्र तुल्य छ॥ १०॥
जवानी धन सम्पत्ती मालिक् फेर्अविचारि हौं।
अनर्थै एक मानैछ भने चार्भाल के भनौं॥ ११॥
यो सुनी शास्त्र रहित् छोरा हरूलाई देखि खिन्न भएका

राजाले चिन्ता गर्दा भये

त्योपुत्र जन्मि के काम जोन विद्वान् न धर्मि छ।
फुटेका नेत्रले के छ ? चक्षुको दुःख मात्रछ ॥ १२ ॥
नजन्मेका मरेकार मूर्खमा पहिला वरम्।
पैलाको थोर हो दुःख मूर्ख कोत अहर्निसम् ॥१३ ॥
त्योपुत्र जन्मि पो काम जस्ले वंश अशल्हवोस्।
घुमने यस लोक्म को जन्मने मरने न होस् ? । १४ ॥
गुणि जनको गणनामा जुन जन्को पहिले न नाम आवोस्
त्यसकी माता पुत्रवति भई भनेमा बाँझि पो को होस् ॥१५॥
विद्यामा धन लाभमार दान्तपस्या सुरथाविमा।
जस्कोमन् अधिसदैंन विष्टा त्यो मातृको यहां ॥ १६ ॥
असल्होसएउटा पुत्र मुर्ख धेरै नहुन् अहो !
धेर्तारा भइ के काम ? चन्द्र एक तमघ्न हो ॥ १७ ॥
पुण्यतीर्थं महाँ जस्ले तपस्या वहुतै गऱ्यो।
आज्ञाकारि धनि विद्वान्त्यस्को पुत्र अवस्यभो ॥१८॥
धन्प्राप्ति नित्यैर निरोग फेर प्यारीत पत्नी. प्रिव वोलने छ।
असल्छ छोरो मुखमाछ विद्या, लोक्मात राजन् ! सुखयै छ नित्य ॥१९॥
धेपुत्रले छ को धन्य ? भकारि भरिने सरा।
असलएक्पुत्र वाटैहोस् पिताप्रख्यात्जगतभरी ॥ २० ॥
ऋणगर्ने पिताशत्रु व्यभिचारिणि मातृहो।
पत्निरास्त्रि वैरितुल्य अपठित्पुत्र शत्रुहो ॥ २१ ॥
विद्यानभ्यं विष्तुल्य धेरखायेत भोजन।
दरिद्रको सभा विष्हो वृद्धका तरुणी जन ॥ २२ ॥
खराव्कुल्को जन्मपनि गुणवान्पूज्य वन्दछ।
तादो रहित धनुको असल्होस्काम के छर ? ॥ २३ ॥
हा ! हा पुत्र ! अहो ! तम्ले गयेका रात्रि हेरुमा।
पढेनौ त्यस कारण्ले गढे की गौसमान्हुन्या ॥ २४ ॥

त्यसोहुनाले यसबखत्मा इछ्वाराहरू कसरि गुण वान्हालान्।
खानूर सुत्नु भय मैथुनादि, सम्पूर्ण इता पशुमा पनीछन्।
मानिष माहोस विशेष धर्म, हिन्धमे लेता पशुकै समान ॥२५॥

धन्धर्म काम मोक्षादि जस्मा एक् पनि छैन जो।
वाख्राका घांटिका स्तन्झैं त्यस्को जन्मत व्यर्थ हो ॥२६॥
धन् आयु कर्म विद्यार मृत्युना प्राणि हेरूको।
ई पांच् कुराता एकाने गर्भ बाटै बनी गयो ॥२७॥
भाग्यको फलता एक्ला ठुलामा पनि हुन्छ जो।
नङ्गा श्रीशिवज्ञी फेरि सर्पमा विष्णु सुत्नुभो ॥२८॥
नहुने चिजकसै हुन्न हुनेमा हुन्न अन्यथा।
यस्तो चिताउने जन्ले असल् औषधि खान्न क्या ? ॥२९॥
ई कहिये का आलस्य युक्त वचन् कार्यमा असमर्थ का हुन्।
दैवलाई त संझेर उद्योग छाडनू हुन्न है।
तिल्तोरिमा नपेल्नाले तेलता पानि दैन है ॥३०॥
उद्योगि सिंह पुरूषै संग लक्ष्मी जान्छिन्,
दीयेन दैव भनि कुत्सित लेत भन्छन्।
छाडेर दैव कन गर्नुत आफ्नु उद्योग,
यत्नै गरेर न भये वुझ के छ त्यौं दोष् ॥३१॥
जस्तै एक् चकले रथ्को गमन्हुन अशक्यछ।
उद्योग् रहित भाग्यैले फलप्राप्त छ मुश्किल ॥३२॥
पैले को कर्मता जुन्हो त्यैभाग्य भनि भन्दछन्।
उद्योगले उनै कार्य ऐले सफल बन्दछन् ॥३३॥
जस्तै कुमालले भांडा इच्छा तुल्य बनाउँछ।
त्यस्तै भाग्यपनी हेर कर्मबाटत मिल्दछ ॥३४॥
काक तालिसमानैले पायेको धन्पनी अहो ?
दैवले स्यार गर्दिन्न आफनै उद्योग चाहियो ॥३५॥
उद्योगले मात्र सप्रन्छन् कार्य फेरि मनोरथ।
सुतेका सिंहका मुख्मा मृग आयेर पस्छर ? ॥३६॥
पढ़ाये वावु आमाले पुत्र पण्डित वन्दछ।
गर्भबाट तखस्नाले मात्र पण्डित कहां तछ ? ॥३७॥
अपठित् पुत्र राख्नेति मातृ पितृ त शत्रु हुन्।
तिपुत्र हांसका बिच्मा वकुज्ञा तुल्य वन्दछन् ॥३८॥
असलकुलको जन्म अनी रूप यौवन प्राप्त होस्।

विद्याले हीन मानिन्न पलांस् फुल्तुल्य जान्नुहोस् ॥३९॥
सभामा वस्त्र लायेको मूर्ख मान्यत बन्दछ ।
जाहां संमत बोल्दैन बोलेमा भ्रष्ट पार्दछ ॥४०॥

राजाले यस्तो विचार गरेर एक पण्डित सभावनाई राजा भन्दछन् 'पण्डितजी हो ? सुन्नुहोस् तपाञि हेरूमा यस्तो कोई छकि ? जस्मा खराब मार्गमा लागेका। मेरा छोरा हरूलाई नीतिका उपदेशले पुनर्जन्म गराउन समर्थ भयेका।

सुवर्णका नजिक् बस्दा काँच शोभित बन्दछ ।
त्यस्तै मूर्ख पनी सत्संगले मान्य बन्दछ ॥४१॥
तुच्छका सङ्गले तुच्छ, मध्य का साथ मध्यम ।
बड़ा सत्संगले गर्दा मानिस् बन्दछ उत्तम ॥४२॥

यस पछी विष्णु शर्मा नामका विद्वान बृहस्पति तुल्य गरि बोल्दछन् हे राजन्? हजुर्का असल कुलका सुपुत्र हरूलाई नितिज्ञ गराउन सक्दछु।

खराब कुलको जन्मलाई असल् पार्नु छ मुश्किल ।
सुवाभैँबकुला लाई को पढाउन सक्दछ ? ॥४३॥
हजुर्कोयो असल्कुलमा खराब्को जन्म केछर ?
मणिका खानिमा कैले कांच निस्कन सक्छर ? ॥४४॥
उदयाचलको वस्तु झल्कन्छ सूर्यतेजले ।
त्यस्तै मूर्ख पनी विद्वान् बन्छ सज्जन सङ्गले ॥४५॥

त्यसो हूँदा छमैन्हा संममा तपाञि का पुत्र हरू पढाउँछु 'फेरि राजा नम्रभै भन्दछन् ।

किरो पनि पुग्छ शिर्मा पुष्प संगतले गरी ।
वडा लेमानिएको त्यो बन्छ ढुङ्गो पनी हरि ॥४६॥
गुण्हेरू गुण्मा असलै रहन्छन, दुर्गुण महां तीत खराब बन्छन् ।
नदी महां जल्छ अतीव मीठो समुद्रमा प्राप्त भयेन मीठो ॥४७॥

त्यसो हुनाले इ छोरा हरूलाई नितिज्ञ गराउनमा हजुरनै स्वतन्त्र हुनु भयो, जस्तो असल्छ त्यस्तै शिक्षा गरीबक्सियोस् यसो भनेर राजाले बडो आदर पूर्वक, तिपुत्र हरूलाई विष्णु शर्मा का साथ समर्पण गर्दाभये ।

( इति प्रस्ताविका )

———

यस पछी एक दिन दरवार को छतमा आनन्दले वसेका वेलामा
कुराको प्रसङ्ग मा राजपु हेरू संग विष्णु शर्मा भन्दछन्
काव्य कै खोजमा सज्जन् हरूका काल वित्दछ।
निद्रामा झगड़ा मार जुवामा मूर्ख को त छ ॥ १ ॥

त्यसो हुनाले तिमा हरूको चित्त विनोदकालागी कौवा कछुवा आदिका विचित्र कथा भन्दछु। राजपुत्र हरू "गुरु भनियोस् विष्णु शर्मा" सुन मैं पहिले मित्रलाभका कथाका आरम्भ गर्दछु जसको योपहिलो श्लोकहो"

रहित उपायले धनहीन विना साधन बुद्धिमान्
कौवार कछुवा मूषो मृगझैं कार्य गर्दछन् ॥ २ ॥

राज पुत्र हेरू "यो कुरा कसरी ? विष्णु शर्मा" हेर गोदावरी नदि को तीरमा ठुलो सिमल को रुख थियो त्यहाँ रातीमा अनेक ठाँउका चराआई वस्दथे यस्तैमा एकदिन वेहानि पख चन्द्रमा मलीन भये पछि तिनै मध्येको लघुपतनक नामको कौवा मानो ? यम दूतनै हाकि ? जस्तो व्याधालाई देखि चिन्तातुर भयो. अहो ? आज प्रातः मानै अनिष्ट दर्शन हुन्छ न जान ? आजके. विपत्ति आई लाग्ने हो. यो विचार गर्दै व्याधा जती अघी आउंछ उनि पर सर्दै गयो भनेको पनी छकि ?

शोकःस्थान हजारौं छन् डरका स्थान छन्सय।
मूर्ख लाईत छन्शाक्डतिनव् टार्दछ पण्डित ॥ ३ ॥
त्यसो हुनाले व्यवहारि पुरुषले यांपनी शो नु कर्त्तव्य छ।
प्रातः मानै उठी मन्ले शोचनू आज पर्छ के।
मरण् र व्याधि शोकैमा कांगनु सावधानले ॥ ४ ॥

यस पछा त्यो व्याधा त्यहाँ को फाकटगा जाल फिंजाई लुकेर वस्यो यसै वेला सपरिवारले उडेका परेवाको मालिक चित्र ग्रीवले जालमा छरेका कनिका देखि खानमा लोभी अरू परेवा संग भन्यो भाई हो ? यो घोर वनमा कनिका कसरी ? यस्मा जानु कल्याण छैन यसमा लोभगरे हाम्रो पनी त्यस्तै दशाहोला, जस्तै "वालाका लोभले गर्दा अप्ठारो ढावमा गढी बूढा वाग्लेत पक्डेर मरेको वटुवा सरी" परेवा हेरू भन्दछन् यो कुरा कसरी ? चित्रग्रीव भन्द छ





(१) लोभी पथिकर बूढा वाघको कथा )

मैले दक्षिण को जङ्गलमा देखेको छुकि ? यौटा बूढो वाघ स्नानगरी

हाथमा कुश लिई तलाउमा बसी आउनेवटुवा हरूसङ्ग भन्दथ्यो योसुन्को वालो दान लिनु होस् योसुनी यौटाले योत भाग्यले मात्र पाईन्छ तर यसमा भट्ट पर्न मयेन

शत्रु देखि प्राप्त भये पनी फस्तुत व्यर्थछ।
जस्तैं अमृतमा वीष परें सब् वीष बन्दछ॥ ६॥
परन्तु जुन्कुनै, धन कमाउदा पनी दुःखै छ।

भनियेको पनीछ शङ्कामा न चढी तेसै कल्याण् देखदैन मानिष

शङ्का देखित बाँचेमा ऐश्वर्यं बल्ल देखदछ॥ ७॥

भन्दै वटुवा भन्दछ मृगराज ? तिमी सधै हिंसा गर्दछौ तिम्रो कुरा कसरी पत्याउं ? बाघ भन्दछ पथिकजी ? मबूढो भव्ने इन्द्रिय हरूको बल पनी घटी सक्यो त्यसो हूँदा हिंसा गर्न छाडें केवल उनै पापको प्रायश्चित्त गर्दछु तपाँई लाई गरीब देखि वालो दिन लागेको ?

क्षमा. दान, यज्ञ पाठ. सत्य, धीर, तपस् अनी
अलोभ, आठ् इनैलाई भन्छन्सत्मार्ग हुन्मनी॥ ८॥
यज्ञ, पाठ, दान, तपः, सामान्य पनि गर्द छन्।
अलोभ्, क्षमा, सत्य, धैर्य, वडामा मात्र हूँदछन्॥ ९॥

त्यसो हुनाले, म, निर्लोभता पूर्वक बालो दान गर्न बसेको हूँ तथापि तपाँि लाई बाघले मानिष्मार्दछ भन्ने विश्वास किन नहोस् र ? भनेको पनीछ

देखा सिखी गर्छ लोक, आदेस्कुट्टिनि का नली।
ब्राह्मणभये गोघ्न कोतक् हिंडदों उपदेशली॥ १०॥
शास्त्रो क्त छ, मरु भूमि महां बृष्टि भोकामा खाद्य चीजर
दरिद्रमा दियेको दान सफलबन्छ युधिष्ठर !॥ ११॥
आफ्नो प्राण् जतिप्यारोछ अर्काको पनी त्यैसरी।
महात्मा हेरू जो सबमा देखदाछन्बराबरी॥ १२॥
मोक्षमा सुख दुख् दान्मा प्रेम् अप्रेमर गालिमा।
सज्जन ले काम गरन् आफ्नु दीयेर ऊपमा॥ १३॥
मातृ झैं पर पत्नी मा ढुंगा झैं पर धन् महाँ।
आफ् झैं सर्व प्राणी मा पण्डित् हो यति देखन्या॥ १४॥
दरिद्रमा दिनू दान धनी मा दान् न पारनू।
औषध् ज्वरामा चाहिन्छ सञ्च माहां न खवाउनू॥१५॥

आफ्नू स्वार्थ सिद्ध नभै दियेको जौन दान छ।
देश काल् पात्र माहेर त्यसैको फल मिल्दछ ॥१६॥

अवस्नान गरी वालो दान लिनुहोस् ? यस पछी जबलोभले पस्योत हिलामा गढी हाल्यो तव वाघले गढयौफिहं, म उठाउंछू भन्दै पञ्जाफुकायो तव पथिक चिन्तागर्छ,

न कामको पढनत धर्मशास्त्र न वेदले केही गर्‍यो दयार्थ ॥
दुरात्मको आत्म कहां असल् र न मिष्ट गौको दुध कांथियोर ॥१७॥
चित्तका वशपर्नाले हस्तिका स्नान झै भयो।
मन् वश् नहूने विधवा नारि शृङ्गार तुल्य हो ॥१८॥

त्यसो हुनाले मैले असल काम गरीन किनकी—

दुरात्ममा विश्वास गरें
नदीमा शस्त्र लीनेमा नङ्गार शिङ् हुंने महां।
विश्वास न गर्नु मानिष ले स्त्रीमार राज कूलमां ॥ १९ ॥
स्वभाव् पैल्हे विचार्गर्नु सम्पूर्ण जन्तु हेरूमा।
वुद्धि भन्दा अधिसर्छ स्वभ वै यसलोकमा ॥२०॥
गगन विचदगुर्ने, रात्रिको नाश गर्ने, बहुत किरण-
जस्का. तारका वीच वस्ने।
शशिकन्त करमैले, राहुले ग्रस्त गर्छ, विधि वस वनियेको,
भाग्यको टार्न सक्छ ॥२१॥

यस्तो विचार गर्दा गर्दै वाघले मारि हाल्यो र खायो पनी त्यसो-हुनाले मभन्दछू, “वालाका लोभले गर्दा” इत्यादि त्यसो हूंदा, विचारनगरेको काम गर्नु हुंदैन।

सुपक्व अन्न र सुवुद्धि पुत्र, पढेकि पत्नि नृपतीत सेवित।
विचार को वोलि पनी जउन्छ, त्योता सदा अन्नयनै रहन्छ ॥२२॥
वूढाको वचनै मान्नु आपत्काल परे महां।
सर्वदा मानि राख्नाले भोजन्को पनी नास् हुन्या ॥२३॥
संन्सार्मा सव कार्यैमा शङ्काले परि पूर्णछ।
शङ्का असाध्य गर्नाले जीवन्मा दुःख पर्दछ ॥२४॥
द्वेष् गर्नेर असन्तोषि क्रोधि शङ्का अती लिंदा।
सहायताले जिवमा आपद् पर्दछ सर्वदा ॥२५॥

यो सुनेर सबै परेवा हरुकनिका खान जालमागै बसे यो ठीक भनेको छ

पढेका धेरशास्त्रादि सब कार्य जानदा छँदा।
भ्रमको दूर गरन्ति फंस्छन्लोभ अती हूंदा ॥२६॥
लोभले क्रोध बढ्नोछ मोह्न काम हरू पनी।
नासको कारणै त्यैहा लोभ भन्छन्बडा मुनि ॥२७॥
हरीण सुन्कोत कहां भयेथ्यो, तथापि श्रीराम्प छ लागनू भो।
विपत्तिमा धीर समेत भुल्छन, क्यैलोभले धेरमहांत फँस्छन् ॥२८॥
जालमा परे पछी, त्याहाँ जाऊं केहि डर्छैन भन्नेलाई

सवले गाली गर्न लागे।

नमनु अधि सब भन्दा फल पायेत एक हो।
बिपत्ति पर्न आयेमा अगुवा मासने भया ॥२९॥
वस्मा चित्त नहूनाले आपत्ति आइ पर्दछ।
चित्तनै वस पारर सन्मार्ग लिनु पर्दछ ॥३०॥
यस्तो गालि सुनेर चित्रग्राव भन्दछ हेरया एसको दोष होईन,
मित्र को आगमन्महाँ पनी आपत्ति आउंछ।
वाच्छिबाधन गाईको खुट्टा नैथाम तुल्यछ ॥३१॥
त्योहा मित्र नउन्जल्ले मित्र को दुःख हर्दछ।
समर्थ भैपनी जो हो नगर्ने त्योत शत्रुछ ॥३२॥
त्यसो हुनाले विपदमा हडबड गनु कातर हा अवधैर्य

गरी छुट्ने उपाय गरौं।

विपद मा हुनुधीर चतुर्सभा, विचत विरणमा सुयशः प्रभा।
श्रुति महाँ मति उन्नतिमा क्षमा,यति कुरा हुनुपर्छ महात्मभा ॥३३॥
जो सम्पत्मा हर्षरहित् विपत्तिमा धीर लड़ान्मिमावीर।
त्यस्ता तिन्लोक का तिलक कता कती मात्रछन्हेर ? ॥३४॥
निद्रा, तन्द्रा, रीस, डर, आलश्य, दीर्घ कामई।
सज्जनले छाडनू पर्छ भये उन्नतिमा मती ॥३५॥
अब हामी हरूले योगनु योग्य छकि सब जाल समेत लिई उडौं।
सबैले मिलि गर्नाले ठुलो काम पनी बन्दछ।
खरका मेल ले हेर हात्थि बाँधिन सक्तछ ॥३६॥
सानै पनी आफ्नु कुलको समाज अति वेसछ।
धानको मुसफालेर नउब्जा हुन सक्तछ ॥३७॥

योसल्लाह गरी सब जालस्मेत लिई उडे यो देखि व्याधापनीपछी लागि चिन्ता गर्दछ, अहिले त उडे सारा पक्षिहेरुत एकभै।

झगडा जब गर्नें छन्पनें छन् बल्ल हातमै ॥ ३८ ॥

जब उडदा उडदेन्याधाले परेवा हरूलाई देख्नै छाड्योतब मूर्छापरी गिऱ्यो त्यसलाई देखि परेवा हेरू चित्रग्रीव संग भन्दछन् अवहामी के गर्नें ?

चित्रग्रीव भन्दछ

माता पितार मित्रादि स्वभावले हित चिताउछन्।
अरुता लोभले मात्र अर्काको हित गर्दछन्॥ ३९ ॥

त्यसो हुनाले यौटा हाम्रा मित्र मुसाका राजा हिरण्यक समुद्र तीरमा छन् तिनैले हाम्रा जालकाटि दिन्छन् योनिश्चयगरी सबैहिरण्यकका घरतर्फ हिडे मुसोबाहिरै थियो, परेवाका सब्दले भित्रगै चुपलागि बस्यो यसपछि चित्रग्रीव चिच्यायेर भन्दछ, मित्र! हामिहरू आउँदैमा किनभित्र जानुभयो किन बोल्नु हुन्न ? योसुनी हिरण्यक हतपत बाहिर निस्की भन्दछ, अहो! आज मेरो भाग्यको फलले मित्र दर्शन मिल्यो।

मित्रका साथ जोबस्छ वार्ता लाप्पनि गर्छजो
अङ्कमाल भये देखी त्यो भन्दा पुण्यवान को ? ॥ ४० ॥

यसपछि जालमाबाधियेका मित्रहरुलाइ देखि हिरण्यक भन्दछ मित्र! योके-आश्चर्य! चित्रग्रीव भन्दछ यो हाम्रा पूर्व जन्मको फल हो।

जुनपाप धर्म जसरी जुनस्थान माहां, गर्दोछ जस्तरहले वसि भूमिमाहां।
त्यैस्थानमा त्यसरिनै त्यहिकारणैले, मिल्दोछयोभवमहांफलसबक्रमैले ४१॥

पश्चात्ताप, रोग, शोक, बन्धन् आपत्ति ई सब।
निश्चयै पापका फल्हुन् सबैले भोग्नु पर्दछ ॥ ४२ ॥

यो सुनि मुसो चित्र ग्रीव तर्फ जालकाट्न जान लागेको थियो यो देखी चित्रग्रीव भन्दछ हजूर यसो न गर्नोस्! पहिले मेरा आश्रत वर्गको जालकाटि मेरो काटनु होला मुसोभन्छ, मित्र! मेरो शक्ति थोरै छ, दातपनि कमला छन् त्यसो हुँदा सबको जालकसरी काटु दांत न फुक्ले संम तपाइंको काट्दछू पछी यथा शक्ति काटुला आफ्नो हानिगरी गरी अर्काका उपकार गर्नु नीतिकारको पनि सम्मत छैन।

आपदार्थ धनैराख्नू धन्ले स्त्री पालनै हवोस्।
आफुलाइ दुबैबाट रक्षा सतत नैहवोस् ॥ ४३ ॥

धर्म, अर्थ, काम, मोक्ष, इन्को कारण प्राण हो ।
सो हेमा केरहेन नरहेमात के रह्यो ॥ ४४ ॥

चित्रग्रीव"'मित्र ? योठीकछ तर आश्रित वर्गको दुख देख्न नसकी भनेको हूँ ।

धन, प्राण् उपकारैमा सज्जन्ले दिनुपर्दछ ।
उस्को नास् हुन लागेमा सत्ययोग् दिनु योग्यछ ॥ ४५ ॥
जाति, द्रव्य, बलादिमा परेवा सम देख्दछू ।
ममालीक्भइ केकाम भन्नोस्न एति सुन्दछू ॥ ४६ ॥
मदेखि इनि छुट्निन्न् कस्तैमा पनि जान्नु होस् ।
क्यै ख्याल नगरी मेरो इन्को दुःख छुटाउनोस् ॥ ४७ ॥
हड्डि, विष्टा, मासु, मुत्र, मेद, देखी बनीयको ।
मतलव् शरीर्को राख्दीन इच्छा गर्दछु कीर्तिको ॥ ४८ ॥
अनित्य मरनेवाला शरीर्को बदला महां ।
निर्मल् कीर्ति मिले देखी के मिलेन जगत्महां ॥ ४९ ॥
शरीर घुणमा हेर, बहूतै भेदपर्दछ ।
गुण् रहन्छ प्रलय तक् शरीर्ता जल्दि भर्दछ ॥ ५० ॥

यासुनी हिरण्यक मन्दछ साधु मित्र ! साम् आश्रित पुरूषका उपर यति दया भयेका हजूर तीन लोकको मालीक हुन योग्य हुनुहुन्छ, यसो भन्दै सबको जाल काटेर चित्रग्रीव कोपनि भ्याइ भन्द छ, तपाइं हरूले जालमा परेको कुरामा आफ्नो दोष संभी आफ्नु निन्दा गर्नु ठीक्छैन ।
किनभने:—

हजार्कोस्को मासुलाइ जोपक्षी देख्न सग्दछ ।
विपद्मा नजिकै कोजाल् पनि देख्नु असक्यछ ॥ ५१ ॥
शसिर सूर्य महां ग्रहणे हुने. सरप हात्ति हरू पनि बाधिने ।
सुजन पण्डितको गरीपता, करमको फलठान्छु सदामता, ॥५२॥
आकास्मा घुमने चरोपनि अहो ? आपत्तिमा पर्दछ ।
माछो जल्विचमा भये पनि सखे ! जालमात पक्डींदछ
योग्यैके ? कुनहो अयोग्य भवमा ? केयोग्य लाभ्होरछ ।
आपत्तोत जगत्भरीछ बुझ्नो मौका महां छोप्दछ ॥ ५३ ॥

यसरी हिरण्यकले मित्रसंग कुरागरी पाहुनाको योग्य सत्कार गरेर

विदागर्‍यो चित्रग्रीव साथि हरूसंग जाने थांउमा गयो हिरण्यक पनि ब्वालमा पस्यो ।

परस्परमा मानिषले मित्रता गर्नु पर्दछ ।
परेवार मुसामाहा कत्रोप्रेम भई रह्छ ॥ ५४ ॥

यसपछी लघुपत नक यो आश्चर्य देखी हिरण्यक का प्वालमागै भन्दछ हिरण्यक ! तिमी धन्य रहे छौ, त्यसो हुनाले मपनि तिमिसंग मित्रता गरन चाहान्छु मसग पान मित्रता गर ! योमुनि मुसो भन्दछ, तिमि कुनजात हौ ? कौवा भन्दछ, मलघु पतनक, नामको कौवा हूँ तब हिरण्यक हांसेर···आह ? तिम्रोरमेरो मित्रता कसरी ?

पण्डित्ले आफु तुल्यैमा मित्र भावत गर्दछ
मखान्छू अन्न तिमिले मखाने क्यार मिल्दछ ? ॥५५॥
खानेर खाइने मार्मै मित्रभाव कसारि हां
श्याल देख बाधियेका मृग कागले छुटाइयो॥५६॥
कौवा भन्छ योकसरो ? हिरण्यक भन्दछ ।

## ( २ ) मृगर श्यालको कथा

मगध देशमा चपक वती नामको ठूलो जंगल थियो, त्यहाँ पुराना मित्र कौधार मृग बढा प्रेमले वस्दथे. तिन्मा मृग खूब मोटो थियो, इच्छानुसार वनमा घुन्दथ्यो. एक दिन एउटा श्यालले त्यसलाइ देख्यो र विचार गर्न लाग्यो की अहो ! यस्को मीठो मासु कसरि खाउं, अच्छा पहिले यससंग मित्रता गर्नु पर्‍यो, योनिश्चय गरी मृगसँग गैभन्न लाग्यो मित्र ! कुशल हुनु हुन्छ ? मृग भन्छ तिमी कोहौ ? उभन्छ म क्षुद्र बुद्धि नामको श्याल हूँ, यो बनमा म मित्ररहित् मुर्दा तुल्य भैहिड्दयें ऐले तपाइ लाइ सज्जन मित्र पायेर माना ! पुवर्जन्म जस्तो सहर्पछु । म अब सदा तपाइ का साथमा रहन्छु मृगभन्छ नप इ को बो इच्छा ! त्यसपछी सूर्य अस्ताउन लागे, र दुवै मृगकाघर तर्फ प्रस्थान गरे चंपा वृक्षमा मृगको मित्र सुबुद्धि नामका कौवा वसेको थियो श्याल लाइ देखि कौवा भन्दछ, त्या काहां ? मृगभन्दछ श्याल हुन्, ससंग मित्रता गर्न आयेका हुन् कौवा भन्दछ अनाचक आयेका पुरुष संग मित्रभाव गर्नु योग्य छैन,

कुनस्वभाव नजानेका चीजका संङ नवस्तुहो

विरालाका गरी दोष्ले जरद्गव् गिद्ध मारियो
तीदुई भन्दछेन् योकुरा कसरी ? कौवा भन्दछ ।

## (३) गिद्धर विरालाको कथा—

भागीरथी को तीर या गिद्धोर नामको पर्वत छ, त्यहां योटा पांकुरीको वृत्तथियों त्यस्का प्वालमा जरद्गव नामको गिद्ध वसदथ्यो वूढ़ो हुनाले उस्का दाँतर नङ्गा गिरेका थिये यस्तो देखेर दया उठेका पत्तीले आफ्नो आहार चुंड़ालि उसलाई दिर्न्थ यसै बाट उसको जीवनि चलेको थियो त्यरको बदला उसले उनका बच्चाको रत्ता गर्दथ्यो यस्तैमा एउटा लांकाने नामको विरालो बच्चा खान का लागी वहां आउन लागेको थियो यस्लाई देखि बचचाहरू डरले कोलाहल गर्न लागे यो सुनी गिद्ध भन्छ को आयो हँ ? यो सुनी लांकाने विचार गर्दछ अवमनिश्चय यसैवाट मर्दछू फेरी मनमनै—

विपत्ति न हुदै पैले डर मान्नुत योग्य छ ।
विपत्ती पर्न आयेमा योग्य कां गनु पर्द छ ॥५८॥

अब यस्का हात परि हालें भाग्न मुस्किलै छ अब "जोपर्ला सो टर्ला" यस्लाई विश्वास दिलायेर यस्का अगाड़ी जानु फ्यो यो निश्चय गरी गिद्ध सँग गै भन्द छ, हजूर ? नमस्कार, गिद्ध-तिमी कोहौ ? लांकाने-म विरालो हूं गिद्ध-भाग-भाग नभागे मार्द छू, लांकाने-पैले मेरो कुरा सुन्नुहोस् पछीमार्न योग्मभये मानू होला—

जातीले मात्र मानूर पूजागनु अयोग्य छ ।
व्यवहारत जानेर मानु वा पूज्नु पर्द छ ॥५९॥

गिद्ध-उसो भये किन आयेका हौ ? विरालो-म गङ्गा स्नान गरी फलाहारी मैं ब्रह्मचर्य मा रहेको छू अब चान्द्रायण व्रत गर्द छू तपाई ज्ञानी विश्वासी हुनु हुन्छ भन्ने मैंले पत्ती वाट थाहा पायेको छू त्यसो हुँदा तपाई बाट धर्मशास्त्र शिक्ष खोज्द छू त्यस्ता हजुर्ले मलाई मार्न खोज्नु भयो गृहस्थि धर्मत योपो हो—

शत्रू भये पनी उस्को सत्कार गनु पर्द छ ।
वृत्तले काटने लाई पनी छायात दीद छ ॥ ६० ॥

यदि अतिथि सत्कार का लागी धन नभये बचन्ले गनु पर्द छ—

वस्ने टाऊं भार, मीठो बोलि, पानि, इ चीजत।
सबै का घरमा मिल्छ यस्ले सत्कार गर्नु छ ॥ ६१ ॥
जवान बाल वृद्धादी घरमा जौन आउ छ।
सब्को सत्कार गर्नु पर्छ पाहुंनो सर्वमान्य छ ॥ ६२ ॥
दुष्टमा पनि सज्जन्ले दया अत्यन्त गर्दछ।
ब्राह्मण औ शूद्रमा चन्द्र को करण तुल्य पर्दछ ॥ ६३ ॥
पाहुना जसका घर्मा निरास भइ हिड्द छ।
लुटेर उसको धर्म पाप मात्र व छोड्द छ ॥ ६४ ॥
ब्राह्मण का घरमा शूद्र जात प्राप्त भयो भने।
यथायोग्य गर्नु सत्कार्अतिथि देव मानिने ॥ ६५ ॥

गिद्ध भन्छ—बिरालो ज्यादा मासुमा प्रवृत्त हुन्छ यहां धेरै चरा का बच्चा छन त्यसैले भनेको हूं यो सुनी बिरालोनम्र भै भन्दछ म धर्मशास्त्र सुनी बिरक्त भै यो कठिन चान्द्रायणमा लागेको छू हुनत धर्मशास्त्रमा मतभेद छता पनी अहिंसा ठुलो धर्ममानियेको छ –

अहिंसानै ठुलो धर्म अहिंसा ब्रह्मचर्य हो।
अहिंसानै तपस्या हो अहिंसा श्रेय दान हो ॥ ६६ ॥
अहिंसानै ठुलो ज्ञ अहिंसानै ठुलो वल।
अहिंसानै ठुलोमित्र अहिंसित् सर्व शास्त्रछ ॥ ६७ ॥
हिंसालेछ रहित जौन सहन् शक्तिछ जस्महाँ।
सब्को आश्रय जोगर्छ वही जाँद छ स्वर्गमा ॥ ६८ ॥
धर्मनै एकहो मित्र मर्दामा पनि जांदछ।
धन्संपत्ति यहां जो छ सो सबै यहिं वस्दछ ॥ ६९ ॥
अर्काको मासु जो खान्छ तीदुइमा फरकती।
खानेमा थोरआनन्द मर्ने भो हेर ब्रह्मनी ॥ ७० ॥
मर्नु पर्लो भनि मानिष् अत्यन्त दुःख मान्दछ।
आफनो जतिहो दुःख अर्काको नत देख्दछ ॥ ७१ ॥
आफैनै वनमा हेर उम्रेका शाकले पनि।
पेट् परी पूर्ण हूनेमा किनज्यान् अरुको लिनि ॥ ७२ ॥

यस्तो विश्वास दिलाइ बिरालो त्यहीं टोडकामा वस्न लाग्यो क्यै दिनमा त्यस पापि लेचराका वच्चाहरू पनि लगि खान लाग्यो

रविचरा चरा हरू रूदै बच्चा खोज्न लागे यो थाहा पाइ विरालो भागि हाल्यो, र खोजदा खोजदै टोडकामा बच्चाका हाड फेलापारे र भन्न लागे, कीहं यही गिद्धले यो हाम्रा बच्चा खायेछ भन्ने निश्चय गरी उस निर्दोष गिद्ध लाइ मारे।

त्यसो हुनाले मभन्दछु "कुलस्वमाव नजानेका" इत्यादि योसुनी श्याल रीस पूवक भन्दछ, तिमिपनित मृगसंग भेट हुँदा का दिन अज्ञात कुलशील थियौनि, उसोभये किन इनि संग प्रतिदिन प्रेम बढाउँदैछौ।

विद्वान्कोहि जहांछैन सानो मान्य हवोस्जहाँ।
जहाँ क्यै वृक्षनै छैन वृक्ष बन्छ अडेर्ल्यहाँ ॥७३॥
योमेरो अनि योतेरो यसोभन्ने खराब हो।
बढाका लोकनैजान मानौं एक टुकुम्ब हो ॥७४॥

जस्तै मेरा मित्र मृग हुन् त्यस्तै तिमि पनि हौ, योसुन मृगभन्दछ, भोधेरैनकराउनोस्! योजबाव सवाल ले केफायदा छ. सवै एकै ठाउँमा प्रेमपूर्वक लेबस्नु वढियाछ।

स्वभावैले कसैकोक्वै शत्रु मित्र नहूँदछ।
व्यवहारवाट शत्रुर मित्ररेरु चिनीदछ ॥७५॥

कौवा भन्दछ "यस्तै गरियोस् भैगो" यस्तैमा जब उज्यालो भयो, अनि सबयताउनिचर्नलागे, यसैगरी तिनिहरू प्रेमप्रूवंक बस्न लागे, एक दिन एकान्त थाउँमा मृगसंग श्याल भन्दछ मित्र! एकठाउँ हरीयो धान भयेको खेतछ, हिंडनोस्! मखेत बताउँछु भनी श्यामले मृगलाइ खेत बताइदियो सोझो मृग प्रतिदिन त्यहांगैचर्नलाग्यो. क्यैदिन्मा खेतका मालीकले मृगलाइ देख्योर खेतमा जाल लगाइ दियो, र सदाझैं त्यहा मृगचर्दा जालमा वाँधि योर चिन्ता गर्न लाग्यो, यसयम पास बाट बचाउन मित्र, वाहेक कोछर। यहीवखतमा श्यालपनि त्यहिं आयेर विचार गर्न लाग्यो कि मेरा चलाखी कार्य सिद्धभया यस्को छाला काढेपछी मासु लागेको हाडत अवस्य पाउछु, त्यसले मलाइ प्रसस्त पुगिहाल्छ विचरा मृग मित्र श्याल लाइ देखी वडोखुसिभै भन्दछ मित्र! जालकाटेर चांडो वचाउनु होस!

आपद्मा मित्र, ऋणमा निष्कपट् वीर युद्धमा।
निर्धन्मा पत्नि, दुखमा दाजुभाइ त चीनन्या ॥७६॥

अनिकालशोकमा त्यस्तै हर्षमा राजक्रान्तिमा
जो रहन्छ मित्र त्यैहो राजद्वारमा स्मशानमा ॥ ७७ ॥

श्यालले बन्धन देखेर बडोप्रसन्न भै विचार गर्दछ योमजवूद बन्धनमा फंसि हाल्यो। अगाडीमा मृगसंग भन्दछ योजाल छालाद्वारा बनेकोछ, म रविवारको व्रतलियेकोछु छालामुखले कसरि छुं, यदि विश्वास गर्नुहुन्छ भनेभोली जेमनेपनो गरुला अथवा अवश्य काटुला, भनेर श्यालत्यहीं आसफासमा लुकि बस्यो साँझ मृग घरमा नआउँदा कौवा खोजदै बहीं पुग्यो मृगको दशा देखी कौवा भन्छ। मित्र! यो क्या हो? मृगभन्छ, तपाईंका वाक्यका अनादरको फल हो।

जसले मित्र कोउक्ति नमानी कामगर्दछ।
आपत्तिपर्छ त्यसमा शत्रुको हर्ष बढ्दछ ॥ ७८ ॥

कौवाभन्छ, त्योदुष्ट श्याल ऐले कहाँछत! मृग भदन्छ, मेरो मासु खानका लागि यहिं कता लुकेकोछ, कौवा.... मैले तपाइं लाइ पैले नै भनेथें।

छैनमेरो कुनैदोष कस्देखि माननेडर।
भनि नगर्नु विश्वास छ गुणीमा पनीडर ॥ ७९ ॥
मित्रको वाक्यमा विस्वास् गन्धसुघ्न असक्यहोस्।
अरुन्धती नदेख्नेमा काल आउछ जान्नुहोस् ॥ ८० ।

यसपछि कौवा लामोसास फेरेर भदन्छ, हे ठगस्याल तैले यस्तो केका गरीस्

सत्कारकपट्लेर मिठा वचन्ले, विश्वास पर्ने अनि केहि आस्ले।
श्रद्धाभयेका जनहेरु लाइ। आश्चर्य केठग्न महाछ भाई ॥ ८१ ॥
विश्वासी निष्कपटी, इन्मात विश्वासघातगर्ने।
त्तस्ता झूठा कप्टी, पृथ्वि! कसो रीधारणा गर्ने ॥ ८२ ॥
अगाडी ठिक पार्नेर पछाडि का विगारने।
त्यस्ता मित्रत छाडूनूहै माथिदुध्तल विष्हुने ॥ ८३ ॥
नगर्नु दुष्टमा प्रीति मित्रभाव कुनै पनि।
अगाजलेमा हारपोल्छ हात्कालो नजले हुनि ॥ ८४ ॥
दुष्ट लक्षण, योहो।
झर्दोछ पाउतिर खादछ फेरिमासु,
चढ्दोछ कानतिर फेर्नगरी विलम्ब।

गर्दोज उन् उनुनु टोक्दछ क्वैवखत्मा ।
सन्मुखको चरित गर्छ 'मसक्' जगत्मा ॥ ८५ ॥
प्यारावचन्ले दुर्जन्मा विश्वास् नुं अयोग्यछ ।
दुर्जन्को मुखहो मीठो पेटमा विष मात्रछ ॥ ८६ ॥

यसपछी खेतको मालीक हातमा लोह्वौली आउन लागेको देखियोर कौवा भन्छ, मित्र ! तपाइं पेठ फुलाइ हातगोडा तानी सन्नुहोस्. जवर्भ शब्द गरुंला तब दौडि हाल्नु. मृगले तदनुसार गर्‍यो मालीक आउंछ। मृग मरेको, योदेखी अच्छा ! आफैपो मरेछ भन्दै जालवटुल्दै परपुगेको मात्रथियो कौवा कराइ हाल्यो मृगपनि उटेर दौड्यो, योदेखि मालीकले लोह्वालेहान्यो हान्दा मृगलाइ नलागी श्याललाइ लाग्योर म रीहाल्यो ।

पाइन्छ पापपुण्यैको फलता यसलोकमा ।
तिन्वर्ष तिन्महीनार तिन्पक्ष तिन दीनमा ॥ ८७ ॥

त्यसैले म भन्दछु खानेर खाईन माप्रें इत्यादि तब लघुपतनक कौवा भन्छ

तपाइ लाइ खायेर आहार्मेरो नपुग्दछ ।
बचेमा चित्रग्रीव्कोभैं मेरो कां पनिवन्दछ ॥ ८८ ॥
सज्जन्को पशु पक्षीमा पनि विश्वास पर्दछ ।
गुणिका गुणले गर्दा पुनर्जन्म नहूँदछ ॥ ८९ ॥
निन्दालेपनि सज्जन्को चित्त विकृत हुन्नहै ।
वडवाग्नि भयेकोल्यों न तात्ने जुन्समुद्रझैं ॥ ९० ॥

हिरण्यक भदन्छ भाइ ! तिमि चञ्चल छौ चञ्चल संग मित्रता गर्नु अयोग्यछ ।

विरालो भैंसिभेडोर कौवा कातर मानिष ।
खराव्कां गर्दछन्तिन्ले विश्वास्तिन्मा अयोग्यछ ॥ ९१ ॥

जोकि तिम हाम्रा शत्रुपक्षकाहौ, भनेको पनिछ ।

आफु समान्कै प्राणीमा पनिमेल असक्यछ ।
तातीसकेका पानीले पनि आगात निभ्दछ ॥ ९२ ॥
विद्याले भूषण पनि दुर्जन्त्याग्नु पर्दछ ।
मणिभयेको क्या ? सप भयङ्कर हराउँछ ॥ ९३ ॥
नहुने चिज्कसैहुन्न हुनेमा हुन्न अन्यथा ।
पानीमागाडिपारवामा जहाज्हिडन सक्छ क्या ? ॥ ९४ ॥
जोमानिपूशत्रुमा फेरि विरक्त खो महापनि ।

विश्वासगर्‍यो यदिभने खतं हुदँछ जीवनि ॥ ९५ ॥

कौवा भन्छ, मैले सबै सुने तर मेरो यही संकल्प छकि तपाईंसँग अवश्य मित्रभाव गरूँला सो नभये तपाइंका ढोकामा अनसन्त्रतले प्राण त्याग्छु ।

दुर्जन्थैटो समान्हुन्छ विग्रेजोडन मुस्किल ।
सुजन्सुन्का घडाजस्तो बिग्रेमा पनि वन्दछ ॥ ९६ ॥
गलाये धातुको मेल, कारणले पसुपछिमा ।
लोभले मुर्खमा हुन्छ, दर्शन्ले सज्जनै महाँ ॥ ९७ ॥
सज्जन्गडि समान्पाखा नराम्रा भित्रैगूणका ।
वयलैं तुल्यहुन्मुर्ख भित्रहाडूदेखन मात्रका ॥ ९८ ॥
प्रीति टुटे पनि साधु संबन्ध गरि राख्दछ ।
भाँचे कमलको डाँट सूत्र सम्बन्ध हूँदछ ॥ ९९ ॥
चित्तशुद्धि, त्यागि, वीर, एक्नास सुख दुःखमा।
उदारता, सत्य, प्रेम, इगुणच्।हिन्छ मित्रमा ॥ १०० ॥

इत्यादि गुणले युक्त भयेका तपाइं वाहेक मैले कोहिपाउन्न यस्ता कौवाका वचन सुनि हिरण्यक वाहिर आइभदन्छ, मतपाइंका अमृत रूपि वचन्ले तृप्तछु ।

मन्त्रैले सरि चित्तलाइ खिंचने, युक्तीहरूले गरि ।
सज्जन्को मनलाइ खूसिगरने मीठा वचन्ले गरि ॥
घांले तप्त महात शीतल जलै श्रीखण्डको चन्दन ।
मालामोति भयेपनि कहिं शितल्पूर्वोक्त कोहुन्छन ॥ १०१ ॥
भित्रिकुरा प्रकट्गर्ने माग्ने निष्ठुर चित्तको ।
अस्थिर्कोध्भूट जूवाइ दोषहो हेर मित्रको ॥ १०२ ॥

इत्यादि प्रमाण द्वारा तपाईंको एकपनि दोष देखियेन जोकि ।

चतुरोर, सत्यवादि, वोलिवार बुझीं दछ ।
गम्भीर नम्रता ईत देखनाले मात्र हूँदछ ॥ १०३ ॥
सज्जन्को नम्रता फेरि दुष्टको खलता रिष ।
इन्माछ बहुतै भेद वोलिवाट बुझींदछ ॥ १०४ ॥
एक्थोकिचिताउने, एक्थोकभन्ने, गर्नैंत, दुष्टछ ।
जोचिताउछ सज्जन्ले स्वैभन्छ सोहि गर्दछ ॥ १०४ ॥

त्यसोभये तपाईंको इच्छा, भन्दै कौवासंग मित्रता गरि मीठा भोजन्ले सत्कार गर्‍योर मूसो प्वालमा गयो कौवापनि आफ्ना घरगयो

वसपछी कौवारमूसो प्रेमले दिन विताउन लागे, एकदिन् कौवा भन्छ, मित्र, यहाँ भोजनको दुःख हुनलाग्यो अन्तै जाउँ, हिरण्यक....कहाँजाने।

पुरुष्र दाँत, नङ्, केस, स्थानभ्रष्ट भयेमहाँ।
शोभिन्नन्त्यसले सज्जन्स्थान छोड्दइनन् यहाँ॥ १०६॥

कौवा भन्छ, मित्र ! योत कातँर पुरुषको लक्षणहो। जस्तै —

सत्पुरुष्सिंह हात्तीई स्थान छाडेर हिंड्दछन्।
मृग, कौवा, खराब्मानिष्, एकैस्थान्मान मर्दछन्॥ १०७॥
बीर्लाईछ विदेस कैन्नुनिर्पाछ केहोस्वदेस्ता अहो ?
वाहूवल्गरि जान्छ जुन्स्थल महाँ त्योदेस त्यस्कै भयो।
दाँत्मुखपुच्छर नङ्लियेर हतिया वाघ्जान्ज दूर्देस्महाँ।
हात्तीहेरुत मारि खान्छ विरले त्यस्को बिदेस्के त्यहाँ॥ १०८॥

मुसो भन्छ, मित्र ! कहाँ जानेत।

नहेरी परको स्थान पाउसार्दैन वुद्धिमान्।
नदेखि आरको स्थान कसोरि छोड्नेर स्थान्॥ १०९॥

कौवा....मयौटा ठाउँ देखेकोछु, त्योरामोछ। मुसो...त्योकुनहो ! कौवा भन्छ दण्डकारण्यमा कर्पूर गौर नामको तलाउछ, त्यहाँ मेरा नित्र मन्थर नामका कछुआ छन्।

अरूसा उपदेस् गर्दा पण्डित् वन्दछ मानिस।
आफुले धर्मगर्नैंत कोहिएक्मात्र हूँदछ॥ ११०॥

तिन्ले हामिलाइ मीठा मिठा भोजन्ले अवस्य पान्लेछन्, मुसो.... त्सोभये मपनि जान्छु।

जोदेस्मा छैनसन्मान जीविका हुन्नफेजहाँ।
मित्रौषधि जहाँछैन नवस्नू एकछिन्त्यहाँ॥ १११॥
वेदपाठी, धनी, राजा, नदी, वैद्य, इपाँच् जहाँ।
छैनन्भने नवसनू एकछीन पनित्यहाँ॥ ११२॥
जुन्देस्मा जीविका हुन्न, लोक्लज्जा लोककोभय।
सरल त्यागता छैन त्यहाँ वस्नु अयोग्यछ॥ ११३॥
ऋणदिनेर फेवैद्य, वेद्पाठी, जनकी नदी।
ईचारचीज जहाँछैन नवस्नूहै त्यहाँ सुधी !॥ ११४॥

त्यसोहुँदा मलाईपनि लगि जानोस् ! कौवालेपनि तदनुसार गऱ्यो, र दुवैवात चितगर्दै सुखसंग मन्थर काघरपुगे, मित्रलाइ देखेर मन्थरले

सादर अतिथि सत्कार गरी हिरण्यक कोपनि यथोचित सत्कार गऱ्य,

बालक्नै अथवा वृद्ध जवान्होस् पाहुदो हुँदो

त्योगुरू मानियेकोछ पूजागर्नुत योग्य हो ॥ ११५ ॥

ब्राह्मणका गुरूहुन् अग्नि जातको गुरु ब्राह्मण

नारिको पतिहो जान ? सबूको पाहुनु भन्छन ॥ ११६ ॥

उत्तंनै अथवा नीचा अतिथि आयका छंदा

पूजागर्नु यथायोग्य अतिथि जान्नु देबता ॥ ११७ ॥

कौवाभन्छ, मित्र ! हिरण्यकको पनि विशेष पूजागर्नोस्, किनकि यहा पुण्यवान्मा अग्रगण्य दयासागर मूसाका राजा हुनुहुन्छ, यहांका गुण कावयानगर्न २००० जिभ्रा भयेका शेषपनि सक्दैनन् भन्दै चित्रग्रीव को कथा सुनाइदियो मन्थरलेपनि सादरपूर्बक उसको पूजागरेर भन्दछ हजुरयो ।

जनहिन जङ्गलमा किन पाल्नुभो हिरण्यक खन्दछ ।

## ( ४ ) मूसोर सन्यासीको कथा

चंपक नगरमा यौटा सन्यासीको मठ थियो, ।

त्यहां चुडाकर्ण नामका सन्यासी थिये तिनले ।

खाइबचेको अन्न नागदन्तमा टंगाइ सुत्तथे, मत्यो उफ्री-उफ्री खान्थें, एकदिन उनको मित्र वीणाकर्ण नामको मित्र त्यहां आये, चुडाकर्ण उनिसंग गफगरेका थियेर मलाइ डरदेखाउन एक फुकेको बाँसले भित्तामा हाने, वीणाकर्णमित्र ! किनमेरो कुरानसुनि अन्यत्रै ध्यान दिनुहुन्छ, ।

सोझोत दृष्टीर मुखप्रसन्न, वचनमहाँ प्रेम मधूर वाणी ।

उत्सुकयहाँ देख्नु असाध्यप्रेम, मनुष्यको प्रेम महाछ लक्षण ॥११८॥

हेराइटेढ़ो सत्र कार्यको भुल् दोषको प्रकट्गर्नु नगर्नु सत्कार् ।

मौकापरे नामसमेत भुल्नु, विरक्तिको लक्षण येतिजान्नु ॥११९॥

चुडाकर्ण ! मित्र ! मावरक्त भयेको छैन, तरहेर्नोस् योमूसा मेरा भाँडाको भिक्षान्न उफ्री-उफ्री खाइदिन्छ, वीणाकर्ण लेनागदन्त तर्फ हेरि भन्दछन्, योथोरै बलभयेको मुसो यति अग्लामा कसरी चढ्छ, यस्माके हिकारण अवश्यछ जस्तै ।

युवतीले वृद्धपनि महाँकेस ग्रहणगरि, कारणत्यहां जरूहुंन्छ आलिङ्गन यदी गरि

चुडा योकसरी ? वीणाकर्ण भन्दछन् ।

# ( ५ ) लीलावति र वनियाँको कथा

बंगाल देशमा कौशांव नामको शहरछ, त्यहाँ चन्दनदास नामको धनी वैश्य वस्दथ्यो केहिदिन्मा तीयुवती कामदेवका विजय पताका झैंभइन् उनलाइ बुढाबाट सन्मोर्स थियेन, ।

हिमग्लस्त महाचन्द्र गर्मिमा सूर्य वेटिक ।
युवतीमा पनिजीर्ण शरीर्को वृद्धवेठिक ॥ १२१ ॥
केसपाके पछीकस्को काभिदेव भयो कहाँ ।
अर्कैमा ध्यान दिन्छन्ति पति वृद्ध भये महाँ ॥ १२२ ॥

तरत्यो बूडो वैश्य त्यसलीलाप्रतिमा अत्यन्त आसक्त थियो,

वाच्नेर धनको आस छसर्व प्राणि हेरूको ।
युवतीमा पनि त्यस्तै. आसा हुँदछ वृद्धको ॥ १२३ ॥
भोगर त्याग नारीमा बूढाले नत गर्दछ ।
दाँत्हीन् कुकुरले हेर हाड्चाटि हेरि राख्दछ ॥ १२४ ॥

यसपछि एकदिन लीलावति यौवन मदले कुल मर्यादा नघि एक वनिया सँग, फँसी, ।

वस्नू माइत मार मन्परि हुनु सङ्गछ यात्रादिमा ।
अर्कासाथूगटगफ गर्नु रोकनहुनू वस्नू विदेशै महाँ ।
रण्डीको हुनुसाथ अन्न नहुनू लोग्ने बुढो हूनुमा ।
लोग्ने फेर्पर देस मात रहनू कारणछ स्त्री विग्रन्या ॥ १२५ ॥
रक्षी खानु, दुष्टसंङ्ग, पतिदुःखिर घूमनु
विग्रन्छन्नारि अरुका घरमा वस्नु सुतनु ॥ १२६ ॥
मन्परेको कोहि नहोस् जाने मौका पनि नहोस् ।
स्थान नहोस्त्यसमा नारद ! सतित्व हुन्छ जान्नु होस् ॥ १२७ ॥
नारीको क्वैप्रेमि हवोस् क्वै अप्रेमि हवोस्नत ।
नवा-नवा घाँस खोज्ने गाइकै सरि हूँदछ ॥ १२८ ॥
नारी घडाहो घिउको पुरुष्ज्वलित अग्नि हो ।
त्यसो हुँदा अग्नि घिउ सगै राख्नू खरावहो ॥ १२९ ॥
आमा वैनि छोरि इन्का पनि नवस साथमा ।
इन्द्रियमा वडावल्छ विद्वान पनि जीतन्या ॥ १३० ॥
नहोनम्र नहोलज्जा नहोदान नहोडर ।
स्त्रीसती हुनको कारणजस्को परपुरुष्नछ ॥ १३१ ॥

पिता रक्षक्वालकमा, यौवन्मा पतिले गरोस् ।
वृद्धमा पुत्रले गर्छ स्त्रीका मन्पार तानहोस् ॥ १३२ ॥
स्त्रीचञ्चल् ल्वहुतै हुन्छन्देवतामा पनाछयो ।
रक्षित् अचञ्चल् जोस्त्रीछ त्यस्कोपति सुखी भयो ॥ १३३ ॥

एकदिन लीलावती रत्न शोभित पलङ्मा सुखपूर्वक लडकासँग कुरागरी वसेकोथिई, एकाएक उसका दृष्टि उहि बुढामापर्‍यो र झट्टउठेर बूढासङ्ग गै अङ्कमालगरो चुवन गर्नलागी, यस्तैमा मौकापाइ लडका भाग्यो

जोशास्त्र जान्दछन्हेर उशनार बृहस्पति ।
त्योशास्त्र जानने हुन्छ स्त्रीहरूको पनी मति ॥ १३४ ॥

यस्किसिको बूढामा युवतिको आलिंगन देखेर त्यहाँकी कुट्टिनिले विचार गरीकि योवूढामा योसहसा कसरी गइ यस्मा कोहिकारणजरूरछ, अनी त्यो जानाको कारण बुझीर कुट्टिनिले ह्ष्काइ गुप्त चालले दण्ड गर्दी भइ, त्यसैले म भन्दछू "युवतिले वृद्ध पति" इत्यादि यामूसाको ठुलो बलहुनुमा पनिके हिकारण होला, एकछीन विचार गरेर तीसन्यासीले भनेकि यहाँ यसको कारण धेरै धन हुनु नै देखिन्छ, जस्तै

सन्सारमा धनिनैहेर बलवान्कहलाउँछ ।
राजापनि अहोहेर धनले स्वामि वन्दछ ॥ १३५ ॥

अनि सन्यासीले खानता लीमेरो प्वालमा खने रमैले धेरै दिन देखी सँगालेको धन लगदिये, त्यसपछी म शक्तिहीन भयें र वल उत्साहले रहित भयेर भोजन्मा पनि असमर्थ भयें एकदिन मडरले सुस्त-सुस्त हिडेको वेलामा मलाइदेली चुडाकर्ण लेभने, ।

पुरुषधन्का प्रभावैले बलवान् वन्छ, पण्डित ।
धन्लेरहित योमूसो सामान्य भइ हिड्दछ ॥ १३६ ॥
धनहिन्अल्प बुद्धीको काम विग्रेर जाँदछ ।
जस्तै वैसाखमा हेर खोला सुष्कत हूँदछ ॥ १३७ ॥
जस्काधन्त्यसका मित्र धनमानैछ वान्धव ।
धनीनै पुरुषार्थीहा धनीनै वन्छ पण्डित ॥ १३८ ॥
अपुत्रको घरैसून्य जस्को सत्मित्र नै नहोस् ।
मूर्खको सब्दिसा शून्य सव सून्य दरिद्र होस ॥ १३९ ॥
दरिद्र हुनुफेर्मनूं इन्मा मनूंव श्रेयछ ।
दरिद्रमा सदा दुःख मनुंमा अल्प दुःखछ ॥ १४० ॥

वीइन्द्रियै प्रवलकार उहीछनाम, त्यैहोसुबुद्धि अनिफेरि वचन्त्यहीत्र, धन्लेर हित्यदि भयो भनि देखिफेर, त्यस्को दशाकुन भयोनि विचित्रहेर

यो सुनी मविचार गरेंकि अरूद्वारा आफ्नो दुर्दशाको कथा सुनि यहाँ वस्नु ठिक्छैन,।

वुद्धिमान्ले अर्थनास. अपमान, भयोपनि।
घर्को नास दुःखिचित्त नगनूँछ प्रकास्कहिं ॥ १४२ ॥
धन, आयु, दुःख घर्को, मन्त्र मैथुन, औषध।
तपस्या, अपमान, दान, छिपाइ राख्नु पर्दछ ॥ १४३ ॥
विमुख्दैव भयेमाहाँ यत्नव्यर्थ भयोभनी।
वन्वाहेक्सुखकहाँ हुन्छ धनहीन भये पनि ॥ १४४ ॥
कामजित्न सकीयेला दुःखजित्न असक्यछ।
अग्नि बल्छ तथापि त्योशीतल्कैले तवन्दछ ॥ १४५ ॥
फुल्का थुगाँ सरोवत्तं मान्छिको वृद्धि हूँदछ।
कीशिरोपर नै चदछ की जङ्गलतर्फ वस्दछ ॥ १४६ ॥

अवयस मठमा वसी भिक्षा मांगेर जीवन विताउन अत्यन्त निन्दितछ।

दारिद्र्ले वरूप्राण अग्निमा होम्नु योग्यछ।
छुचासँग गरी भिक्षा वस्न साह्रै अयोग्यछ ॥ १४७ ॥
धन्हिन्ले अतिलाज हुन्छ वुझनू लाज्लेत तेज्घड्दछ।
तेज्हिन्लेत अनादरै जब भयो त्यस्लेत खेद्वढ्दछ।
खेद्ले वढ्दछ शोक फेरित्यसमा बुद्धीत नष्टै भयो।
त्यस्ले निश्चय नासभो बुझि लिनू कारणदरिद्रै तहो ॥ १४८ ॥
वरूचुप्पै वस्नू वचन कन झूटो न गरनू।
वरू ख्वाजा ठिक्हो परवधु महाँ नेत्र न दिनू॥
वरू मनूँ जाती खल विचत विश्वास न हवोस्।
वरू मागो खानू परधन महाँ सुख न हवोस्॥ १४९ ॥
वरू गोठै शून्यै तर त्यहिं खराव्गारु नहुनू।
वरू छोटी रण्डी असल वधु विप्रेकि नहुनू॥
वरूवन्मा वस्नू तर कुनृप को राज्य न हवोस्।
वरू मनूँ ठिक्हो पर धन महाँ स्वाद नहवोस् ॥ १५० ॥
सेवागरनू अरुको, मान प्रकास अन्धकार वृद्धता।
हरिकथा पाप हारिहो, माग्नाले हर्छ सव् गुणहा ? ॥ १५१ ॥

यो विचारले के नोकरिगरी आफ्नो पालन गरुँ? मरणतुल्य कष्ट पर्‍यो।

गफ को मात्र पण्डितहोस्, पैमादी मैथुनै गरोस्।
अर्काको खानु अड्कल्ले, धाँच्नु भन्दा वरू मरोस्॥ १५२॥
रोगीवा परदेशी, अरुको घरवस्तु खानु अर्काको।
वाच्नुमा मर्नु योग्य, मरनू विश्राम हेरहो॥ १५३॥

यो विचार आये पनि म लोभले गर्दा फेरी अन्नमा प्रयत्न गरें, धैनमा लोभर असन्तोष हुनु आफ्नो द्रोह गर्नु हो।

लोभले वुद्धि चञ्चल्भै तृष्णा वढ्दछे पेर्अनि।
तृष्णाले यस लोकमार दुःखिभो परमा पनि॥ १५४॥

अनि मसुस्त सुस्त जान लागेको थियें, रवीणाकर्णले वाँसको टुक्डा लेहानेर म चिन्ता गरें।

धनलोभ, असन्तोस, चञ्चलचित्त, हुदा अरु।
चित्तका वस पर्नाले पर्‍यो दुःख मके गरु॥ १५५॥
जस्कोछ मन सन्तोस, त्यस्को धन्पनि हूँदछ।
जस्को छ पाउमा जुत्ता त्यो भूनै चर्म ठान्दछ॥ १५६॥
सन्तोस् रुपि अमृतले जस्को मन्तृप्त हूँदछ।
लोभले दौड़ने लाइ त्यस्तो सुःख कहाँ त छ॥ १५७॥
त्यस्ले पढ्यो शास्त्र सुन्यो त्यस्ले कार्यादिनै गर्‍यो।
लात्मारी आसमा जस्ले निरासा पदवी लियो॥ १५८॥
न जाओस् द्वारमा माग्न जस्ले विरह छाड्दियो।
प्रकास दुःख न गरोस् त्यस्को जन्मत धन्यहो॥ १५९॥
तृष्णामा ग्रस्त मानिष्को हजार्योजन्पनि वर।
सन्तोषीमा प्राप्तपनि धन्तकोछ अनादर॥ १६०॥

श्रेष्ट जन्ले आफ्नो अवस्था अनुसार कर्तव्य निर्णय गर्नु योग्यछ।

श्नेहके हो? सुजननै, पण्डित के हो? सदसत् विचार हुनू।
धर्मकेत? प्राणि दया, कुनहो सुख निरोगी रहनू॥१६१।
विपत्तिमा सत्, असत्को, विचार्नै जान्नु पण्डित।
विचार नगरे देखी पद्पद् मा दुःख पर्दछ॥१६२॥
कुल्कालागी छोड्नु एक, ग्राम लागी कुलैत्यजोस्।
देसका लागिमा ग्राम, स्वलागी पृथ्विनै त्यजोस्॥ १६३॥
विना दुःख पानि मिलोस् दुःखले अन्न नै मिलोस्।

सुखता उहिहो दुःखि अन्नभन्दा जलै मिलोस् ॥१६४॥
यै विचार गरी मनिर्जन वनमा गयें, जोकि
हात्तीर वाह्को तवनैछ वेस, जलफलमहाँ जीवन वृत्ति होस ।
लुगा छ बोक्रा तृणको छ शय्या, गरीव्हनू बन्धुमहाँ न अच्छा १६५
यसपछी मेरा पुण्यका उदयले मित्रजीले प्रेम द्रष्टिले हेर्नु भयो, अहिले पनी स्वर्गतुल्य सुख दायक तपाइँ को आश्रय मलाइ मिल्यो,
सन्सारी पिष वृक्षमा रस युक्त दुई फल ।
एक काव्य महास्वाद, एकै सङ्गतको बल ।. १६६ ॥
मन्थर'''पाऊ का मलझैं छ धन्, गिरिनदी वेग्तुल्यको यौवन ।
फोक्क झैं जलकोत आयुछ, छिटो फेन्तुल्य को जीवन ॥
जौनो मानिष खूब धर्मत गरी वार्दैन द्वास्वर्गको ।
होला वृद्धमहा अवश्य पछुतो शोकाग्निमा त्योडढ्यो ॥१६७॥
त्यो तपाइले धेरै धन सँगाल्नु को दोषहो.त्योनष्टभै तपाइलाइ कष्ट भयेछ
कमाइयेका धनको रक्षाहो दानै यहाँ ।
कूवावाट झिकेको जलशुद्ध हुन्छ जगत्महाँ ॥ १६८ ॥
छुचा अन्ले पृथ्वि मुनि धन गाड्या भने जहाँ ।
नरकमा जानकालागी सिढीतुल्य भयोत्यहाँ ॥१६९॥
उपभोग्दान् रहित्धन्ले जनी संझन्छ पो भनि ।
सझे हामि पनी हुन्छौ तेहानै धनले धनी ॥१७०॥
अर्काकोर आफनोधन्न खानाझे समानछ ।
चोराहुँदा महाउस्को मन्मात्र खिन्न हूँदछ ॥१७१॥
देवता, विप्र, नन्धुर आफुदेखि विहीन धन् ।
राजा, अग्नि चोर देखि नास्हुन्छ भनि भन्दछन् ॥१७२॥
प्रियपूर्वकको दान, गर्वरहित् ज्ञान क्षमायुक्त वीर ।
दान्मा लागेकोधन्, लोकमा हुन्छ दुर्लभ् धीर ॥१७३॥
ठिक्क जंवा गर्नु नित्य, धेरैलोभमा नलागनू ।
असाध्य लोभगर्ना ले मर्ने स्याल्तुल्य जाननू ॥१७४॥
तब कौवार मूसाभन्दछन् योकुराकसरी ? मन्थर भन्दछ

## (६) जंवा गर्ने चतुराश्यालको कथा

कल्याणकटक मा भैरवनामको व्याधाथियो, त्योएकदिन शिकारमा विन्ध्याचलमागयो, र एकमृग मारीहिड्यों, तव उसले एक भयङ्कर वदेल

देख्यो र उसमा पनि वाणप्रहार गऱ्यो, वदेल पनि वडावर्जले व्याधाका अण्डकोपमा दाँतले हान्योरव्याधारुख मुनी मरेर लड्यो ।

जल्, अग्नि, विष, फेर्शस्त्र, भोको र गिरनू यति ।
इन्तिमा केहिकारणले, मनिष्प्राणख्या गर्द छति ॥१७५॥

तव उनि हरुका लात माराइले नजीकको सर्पपनि मऱ्यो, अनि 'दीर्घराव' नामको श्याल भोजन कालागि घुंदैत्यहाँ आयो र तिनि हरुलाइ देखिधन्य भाग्य भन्दै विचार गर्नलाग्यो ।

जस्तैमानिषमा दुःख विना शोचत आउँछ ।
तृष्णा रहितमा भहाँ भोजन् भाग्यले मात्र मिल्दछ ॥१७६॥
अच्छा योमासुले मलाइ तीन पहिना खानलाइ पुगीहाल्छ ।
मैनाएक् नर, द्विमैना मृग सूँगुर हूँदछ ।
एकदिन्सर्पले, आज ताँदाले मात्र पुग्दछ ॥१७७॥

अव पहिले धनुको ताँदो खान्छु, भन्दै ताँदो काट्यो र छड्केर छातिमा लागी श्याल मऱ्यो त्यसो हुनाले मभन्छू थोरै जंवा गर्नु निःश्च इत्यादि ।

खान्दान्को जसको धन्हो त्यसैको धन भन्दछन् ।
मरेपछि त त्यो स्त्रीर अरुले भोगगर्दछन् ॥१७८॥
अच्छा पछिको दुःख संझी दुःखित् हुनु योग्य छैन ?
अप्राप्य वस्तुमा विद्वान् चाहना नत गर्दछ ।
आपत्तिमा हड्वडिन्न नासमा न त शोच्दछ ॥१७९॥

मित्र ! त्यसो हुनाले तपाइ प्रसन्नर उत्साह पूर्वक रहने काम गरनोस्
पढेर शास्त्रै पनि मूर्ख हुन्छन्, कांमा कुशल्जो उहि जान ! विद्वान् ।
विचारको सुन्दर औषधी पनि, ननामले हुन्छ निरोगिक्वैपनि ॥१८०॥
उद्योग उत्साह रहीतक्वैपनि, विद्वान् हुदै हुन्न कतै कुनै पनि ।
हातमात वत्ती लिइ अन्ध मानिष, घडा नुगालाइ नदेख्न सक्छ ॥१८१॥

मित्र ! त्यसो हुँदा चित्त शान्त गर्नुहोस् दुःख नमान्नु होस् खराव को वचन यस्तोछ ।

आस्प स्मा भ्यागुतो जान्छ सरोवर्मा चरो पनि ।
उस्तै उद्योगिकासाथ्का यान्छन् उद्योगहरू पनि ॥१ २॥
उत्साहि, आलस्य रहित् र, फेर, उपायि कांमा, भावमा अलिप्त ।
कृतज्ञ, वीर्होस् दृढमित्र होस, त्यस्का अधी लक्ष्मि कहाँ नहोस ॥१८३॥
विनाधन्लेवीर जगतविच मान्पाउँछ अति ।

छुचोजो धन्युक्तै भइपनि नमान्पाउँछ रति ॥
कहीं कुत्तासुन्को पहिरिकन माला न त अहो ।
हवँस् सिंहैजस्तो गुणसहित कुत्ता उहिनहो ॥१८४॥
मेघ छाया, भूर्खमाप्रें, नवा अन्न, वधू जवान् ।
थोरैकालभोग गर्नाले मात्रसंन्नास हूंदछन् ॥१८५॥
वृत्तिकालागिमा धेरै चेष्टा गर्नु अयोग्यछ ।
ब्रह्मालेनै गरेकाछन् जन्मदै दूध मिल्दछ ॥१८६॥
जस्ले सेता गरेहाँस सुगात हरिया कुनै ।
मयूर्छिकैं गरे जस्ले जीविका गर्दिनन् उनै ॥१८७॥
आर्जन्मा दुख दिदछ, तापदिन्छ विपत्तिमा ।
संपत्तिमा मोहगर्छ, कहाँ सुःख छ अर्थमा ॥१८८॥
धर्मकालागि ऋणलीनू भन्दा इच्छा नगर्नुं ।
हिलोटेकि धुनू भन्दा नहाल्नु पाउवेसछ ॥१८९॥
प्राणीमा यमको डर्छैं धानमा नृप हेरुमा ।
जल, अग्नि, चोर हरुमा बन्धुमा डर्छ लोकमा ॥ १९० ॥
दुःखले पूर्ण सन्सार्मा मानिष भैलके महाँ ।
के दुःख ? मनतुल्यैले धन्पनि पाइयो स्कहाँ ॥ १९१ ॥
कमाउन पनि दुःख रक्षागर्न पनि अती ।
नासमा मरणै तुल्य धन्मा नादनु हैमति ॥ १९२ ॥
तृष्णा छोडिदिंदा कौन गरीभो धनिभो कुन ।
अधीन्मा पाछं अर्काको तृष्णालेत सखे ! सुन । १९३ ॥
मनुष्य जतिधन्पायो उत्ती इच्छा पढाउँछ ।
जस्ले तृष्णा छोड्छ त्यस्ले 'पायेवेस्नत्र छोड्दछ ॥ १९४ ॥
धेरै तपाईंलाइ मके भनू सधैं मसंग वरने गर्नु हास् ।
महात्मामा प्रेमसदा जन्मभरहि राख्दछ ।
क्रोधहुन्छ क्षणमा नास रहिस्वार्थत दानछं ॥ १९५ ॥
यो सुन कौंवा भन्छ धन्य मित्र ! प्रसंसनीय हुनुहुन्छ ।
सज्जन्को दुःखलाईत सज्जन्नै नासगर्दछ ।
गढेको हात्तिलाईत हात्तिलेनै निकाल्दछ ॥ १९६ ॥
मानिष्त्यहीं पृथ्वि महाँछ धन्य, त्यैसत्पुरुष्तेहिछ श्रेष्ठमन्य ।
जस्का नजीका सब याचकादि, निरास भैफर्कन पाउँदैनन् ॥१९७॥

यसपछि मन्थरहरू सुखपूर्वक वस्नलागे, एकदिन चित्राङ्ग नामको मृग कतैबाट डरायेर आयो, त्यस्का डरले तिनीहेरू आफाफ्ना स्थानमा पसे, कौवाले रुखबाट हेर्दा मृगको भयकारण देखेनर, कौवाका भुनाइले सव जंवा भये, मन्थर भन्दछ मृग भाइ ! सञ्चैछ अव इच्छा पूर्वक जलपान गरी वनको शोभा वढाउ, मृगभन्छ, मव्याधाका डरले यहाँ आयें अव तपाइँ हरूसँग मित्रता गर्न चांहन्छु, मुसोभन्छ तपाइँसँग मित्रभाव सहजै हुने भयो.

मित्र चारकिसिकाछन् रक्षक् मामार भानिछ ।
रोल्वंशको विवाहादि गरेको जौंन स्थानछ ॥ १६८ ॥

त्यसोहुनाले तपाइँ आफ्नो घरसंम्भी यहीं बस्नुहोस्, योसुनिमृग खुसिभै प्रेमपूर्वक वस्न लाग्यो मन्थर भन्दछ, योनिर्जन वनमा कसरी डराउनु भयो ; केयहाँ व्याधाछ ? मृगभन्छ, कलिङ्ग देसका रुक्माङ्गद राजा दिग्विजयमा आयेकाछन् र चन्द्र भागा नदीका तीरमा सेनासहित बसेका छन् तीभोलि कपूरसरोवरमा वस्नेहुन्, भन्ने व्याधाका मुखवाट सुनियो, अवयहाँ वस्नपनि डरछ, जो योग्यछ स्वैगरौं, मन्थर डरायेर भन्दछ, अर्कै तलाउमा जाउँ त, मृगर कौवाले मञ्जूर गरे, [redacted]सो हाँसेर भन्दछ, अर्को तलाउमा गये मन्थरको मात्र रक्षा हुन्छ, वहाँको जल वाहेक के गतिछर ?

जल्जन्तुको जलैवलछ, कीलोनै गाइको वल ।
बायको हो स्थान वल, राजाका मान्त्रहो वल॥ १९९ ॥

मित्र ! लघुपतनक मन्थरका उपदेशले हामिलाइ पनि त्यस्तै दशा होला

आफैले देखि चाँपेको स्तन युग्म स्वपालको
दुःखि वाणिक्पुत्र सरी दुःख होला तपाइका ॥ २०० ॥

तव सवै भन्दछन् यो कसरी ? मूसोभन्छ

## ( ७ ) राज पुत्रर वनिजाकी स्वारिनको कथा

कान्य कुब्जमा वीरसेन राजाथिये, वीरपुरमा तुङ्गवल पुत्रलाई अधिकारि वनायेका थिये ती पुत्र धनि र युवक थिये, तिनले आफ्नासहरमा घुम्ने लावण्यवति नामा वणिक्पुत्रिलाइ देखेर आसक्तभै त्यसतर्फ एक दूति पठाये ।

सन्मार्गै विचमा रहन्छ तवलक् लज्जापनि राख्दछ ।
स्थाहाँ संमत लिन्छ चित्त वसमा गफ्हेरुनै गर्दछ ॥

जाँहाँ संमत कामले धनुष कान्संभै खिची छोड्दछ ॥
धैर्यैं धीरत नासने जब तलक् तीखो नवाएयाउँ छ ॥ २०१ ॥

लावएयू वतीतनि राजपुत्र लाइ देख्नासाथ कामले पीडित भैसकेकीथिइन्

अपवित्र, निर्गुणता, माया, लोभू, डाह, साहस,
असत्य, एति नारीको, स्वाभव विक्दोष्कहीं दछ ॥२०२॥

दूतिको वचन सुनि लावएयवती भन्दछे मपतिव्रताछु,यो पाप कार्यमा कसरी लागूँ ।

घर्की कुशल्पनित्यैहो सन्तान वालि जौनछ ।
पतिव्रताहो जलको पतिनै प्राण तुल्यछ ॥२०३॥
भार्याभन्नू योग्यछैन जस्को लोग्ने खुसी नहोस् ।
लोग्ने खुसि रहे त्यस्मा देवता कुन्खुसी न होस् ॥२०४॥

लावएमवतीभन्दछे, पतिको आज्ञाभयेमात्र व्यभिचारि काममा लागुँला, योसुनी द्वतिगई तुङ्गवलका साथ सव कुरा गरिदिई, तुङ्गवल भन्दछन् मकाम पीडितछु कामलाइ कसरी जितूँ, कुट्टिनी भन्छे, उसोभये उस्कोलोग्नेले आफैल्याइ र कूप्याउँछ राजपुत्र भन्दछन् कसरि हुन्छ ? भन्छे, उपाय गर्नोस् ।

उपायले जोसकिन्छ त्योसकिन्न प्रराक्रम ।
श्यालले मारियो हात्ति गाडियेर हिलामहाँ ॥ २०५ ॥

राजपुत्र भन्दछन् योकसरी ? दूतिभन्छे ।

## (८) हात्तिर धूर्त श्याल को कथा

ब्रह्मारएयमा कपूर टिके नामको हात्तिथियो त्यस्लाइ देखि श्यालहरू विचार गर्दछन्, योकुनउपायले मर्दछ, त्यस्को मासुले हामिलाई ४ महीना हुनेथियो, तब एक बुढो श्याल भन्दछ हेरमवुद्धले यसलाइ मार्दछु भन हात्तिका नगीचगै प्रणाम गरिभन्दछ, हजूरमेरा कुरा सुन्नुहोस् ! हात्तिभन्छ, तँकोहोस् ! श्याल भन्छ, मश्यालहूँ सव वनचरका सल्लाहाले आयेको हूँ, राजा नभै वस्न ठीक नहुँदा उनिहरूले राज गुणयुक्त तपाइ लाइनै ठहराये ।

जोकुलमा दाजु भाईमा आचार्मा अति शुद्धछ ।
धर्मार नीति जान्नेछ त्यैराजा हुनु पर्दछ ॥२०६॥
चाहियो पहिले राजा पछिस्त्री आन धनहरू ।
उपार्जन् गरनू योग्य नृप हिन्छकहाँ ॥२०७॥

निति विच सववस्छन् दण्डकानै प्रहार्लैं,
छ जगत विचदुलभसत्य मानीष्स्वभाव्ले,
असल वधु पनीसव्दण्ड काने डरैले,
दुखि, कुवल, दरिद्री, वीचनै त्योत वस्छे ॥ २०७ ॥

त्यसो हुंदा लग्न नटर्ने गरी जानु पर्‍यो, तव दुवै हिडे राजका लोभले श्यालका पछी ? जाँदा श्यालको युक्ति वमोजिं त्योठूलो ढावमा गर्‍यो रहात्तिभन्छ हेश्याल ! मगर्ढे केगरू, तवश्याल हाँसेर भद्न्छ, मेरो पुच्छर समाति निस्क वचन्मा खूव विश्वासगर्‍यौ त्यसैको फलभोग

जैले कुसंग रहित थियौत वाँचदा भयौ।
दुर्जन्का हातपर्नाले अवश्य मरने भयौ ॥ २०८ ॥

तवश्याल हरूजंवाभै हात्तिलाइ खाये, त्यसैले म भन्दछु "उपायले जोसकिन्छ" इत्यादि त्यसवखी दूतिका उपदेशले वणिक्पुत्र चारुदत्त लाइ राजपुत्र कोदास बनाइयो, तव उनले वनित्राका हातमा विश्वासी कामदिये एकदिन कुट्टिनिका उपदेशले राजपुत्र श्नाननगरी चन्दन, गहना लगाई चारुदत्त संग भने, म एकमहिना गौरीव्रत गर्दछू तिमिले राती एक कुलीनयुवति ली आउनु म उसको पूजागर्दछु, तव [redacted]ल्याइ दियो केगर्छन्भनी लुकि हेर्‍यो राजपुत्रले नछोह पूजागरि कन्या वापस दिये, योदेखी वनियाँ विश्वास मापन्योर एकदिन लावण्य वती लाइनै ल्याइदियो, राजपुत्र लावण्य वतीलाइ चिनेर अङ्कमालगरी पलङ्मा सुते योदेखि वनिवा कर्त्तव्य मूढभै खिन्नभयो त्यसो हुनाले मभन्दछू "आफैलेदेखि चापेको "इत्यादि मुसाभन्छ तपाइलाइ पनि त्यस्तै दशा-होला तर हितवचन नमानि मन्थर अन्तैगयो मुसाहरुपनि त्यस्तैमा पछीलागे, मन्थर इ व्याधाले फेलापारी धनुमा वाधी धन्य भाग्य भन्दै घरतर्फ हिड्यो,, तवाखिन्नभै तिनिहरुपति पछिलागे, अनि हिरण्यक विलाप गर्दछ।

समुद्रझैं एकदुखको खतंनमै, पर्छन् अहो !दिन्दिन दुःखता अझ
एकदुःखमा धेर विपत्ति आउछन्, छिद्रामहाँ धेर अनर्थ हुन्छन् २०९
जोविश्वासिमत्रमा हुन्छ मातृर दाजु भाइमा।
नहुन्छ कहिलेहेर पत्नीर पुत्र हेरुमा ॥ २१० ॥
परंपरा देखित पाप् गरेको, शुभाशुभै कर्महरू गरेको।
दुर्भाग्यले हाय ? अहो ? उनैफल, आजैमया भोग्नु परिरहेछ ॥२११॥

नस्वर्शरिर योहोछ, संपत् आपत्तिको घर।
सन्मित्र पनि अस्थीर, सवस्व क्षण भङ्गुर॥ २१२॥
रक्षाशोक महाँगर्ने प्रेमविश्वास पात्रत।
वनायो कसले 'मित्र' इनैवै दुइ अक्षर॥ २१३॥

यस्तो विलाप गरी मुसोभन्छ, व्याधा वनवाहिर नजाँदा संम छुटाउने उपायगरौं, उनि हरुभन्दछन् जेहो भन्नु होस्! मुसोभन्छ चित्राङ्ग जलका नगीचगै मरेभैभै सुत्नूर कौवामाथिवार खान खोजेभै गरी राम्रोहेरनू तवव्याधा मासुका इच्छाले कछुवाइ राखी मृग तर्फ आउँछ रम जालकाट्द छू, तपाइ हरुपनी भागि हालनु, तवकौवार कछुवा तेसैगरे व्याधापनि मृगलाइ देखि छुराली मृगतर्फगयो मुसाले जाल काटि हाल्यो कछुवा जलमा पस्यो उनिहरु पनि भागि हाले तवव्याधा फर्कीं आउँदा कछुवा लाइ नदेखी भन्दछ विचार नगरेको काम यस्तै हुन्छ।

जोखास वस्तु छाडेर अनित्यं तफ जादं छ।
खास त्यस्को नासहुन्छ अनित्य नष्टनै तछ॥२०१४॥

तवनिराश भैघर गयो मुसाहरू पनि स्थानमागै सुखपूर्वक वस्नलागे, तवराज पुत्रहरू भन्दछन् हामि सव सुन्यौं प्रसन्न छौं मनोरथ पूर्ण गर्‍यौं, तव विष्णु शर्मा भन्द छन् तिम्रो सर्व सिद्धि होस्।

सच्चामित्र मिलुन् र लोकहरूमा आनन्द ज्यादा हवोस्।
राजावाटत पालना असलनै सन्मार्ग लेनै हवोस्॥
योनीतियुवती सरी वनिरहोस् आनन्द दायक् अनि।
तिम्रारक्षक हौन् सदात भगवान् चन्द्रार्ध चूडामणी॥२०१५॥

मोदनाथ "प्रश्रित" को भाषानुवाद मित्रलाभ समाप्त भयो।



# प्रेरणा

नेपाल मण्डले केऽपि दोयाटा ग्राम वासिनः
विदुकुल समुद्भूता "टेकराज" इति स्मृताः
पुत्रा कृष्ण प्रसादानाम् मणीव काश्यपेषु च
तेऽस्माकं प्रेरयामासुः पुस्तकेऽस्मिन्प्रकाशने

(पुनरपि, अन्यैः)

श्री माननीया तथा नमनीयाः खिदीमग्राम निवासिनः आत्रेय,धनञ्जय गोत्रोद्भवा अग्रजं वर्याः, श्री पं० यादव-नाथ तथा श्री पं० शूलपाणि शर्मणः प्रचन्ड पण्डित कुल समुद्भूताः, से अस्माकम् पुस्तक प्रकाशने वाक्कायमनसै सततप्रेरयाम सुः, तेनैव ते सदैव स्मरणीयाः— प्रशंसनीया, च सन्ति इति

—:(लेखकस्य परिचयः):—

नेपालान्तर्गते, गुल्मी, खिदिम ग्राम वासिना
आत्रेय गोत्र संभूतः पौड्यालय इति स्मृतः
शोभा करस्य पुत्रस्व घनश्यामस्य पुत्रवै
माता-च वालिका देवी पतिधर्म परायणा
तस्य ज्येष्ठ सुतो मोदनाथ "अश्रित" एवच
तेनाऽनुवदितोऽयं वै पालार्थं मल्पबुद्धिना

( इतिशम् )

।

# यता पट्टि हेर्नु होस्

तपाईंहरूको सेवाका लागि ईयामे शोभा पुस्तकालय खुलीरहेछ. पाल्नुहोस्! अनेक प्रकारका पुस्तकहरू पढि ज्ञान बढाउन होस्! र तन मन-धनले सहयोग गर्नु होस्!

व्यवस्थापक

श्री मोदनाथ प्रश्रित" — श्री पं० जगन्नाथशर्मा

गुल्मी, खिदीम, हरीचोट

(नेपाल)

# यो पुस्तकका प्राप्ति स्थान

श्री टेकराज शर्मा
अधिकारी, अर्घा
हंसपुर, दोबाटा

श्री शोभा
पुस्तकालय
गुल्मी, खिदिम, हरी चोट

श्री मेघ नाथ
गौतम गुल्मी
खिदिम साघन्टुटा

श्री प्रभुराज शर्मा भट्टराई
अर्घा बाङ्ला

हरिप्रसाद शर्मा
फणीन्द्रराज शर्मा
गुल्मी खीदिम हरीचोट